॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

# ॥ अथ लिखितस्मृतिः ॥

## ॥ अथेष्टापूर्तकर्म-वृषोत्सर्गफल-यगापिण्डदान-षोडशश्राद्धादिवर्णनम् ॥

**इष्टापूर्ते तु कर्तव्ये ब्राह्मणेन प्रयत्नतः ।**
**इष्टेन लभते स्वर्गं पूर्ते मोषमवाप्नुयात् ॥१॥**

ब्राह्मणले प्रयत्नपूर्वक इष्ट र पूर्त कर्म गर्नु पर्दछ । इष्टले स्वर्ग र पूर्तले मोक्ष पाउँदछ ।

**एकाहमपि कर्तव्यं भूमिष्ठमुदकं शुभम् ।**
**कुलानि तारयेत्सप्त यत्र गौर्वितृषा भवेत् ॥२॥**

एक दिनका लागि पनि तिर्खा मेटिने गरी जमिनमा (गाईलाई पिउन) पानी राखि दिनेले सात पुस्ता तार्दछ ।

**भूमिदानेन ये लोका गोदानेन च कीर्तिताः ।**
**तांल्लोकान्प्राप्नुयान्मर्त्यः पादपानां प्ररोपणे ॥३॥**

भूमि दानले वा गोदानले जे जे लोक पाइन्छ भनिएको छ, रुख रोप्नाले पनि मानिसले ति ति लोक प्राप्त गर्दछ ।

**वापीकूपतडागानि देवतायतनानि च ।**
**पतितान्युद्धरेद् यस्तु स पूर्तफलमश्नुते ॥४॥**

पुराना स्नानागार, कुवा, तलाउ तथा देवालयको जसले जिर्णोद्धार गर्दछ त्यो मानिसले पूर्तकर्मको फल पाउँदछ ।

**अग्निहोत्रं तपः सत्यं वेदानां चैव पालनम् ।**
**आतिथ्यं वैश्वदेवं च इष्टमित्यभिधीयते ॥५॥**

अग्निहोत्र-तप-सत्य र वेदको रक्षा, अतिथि यज्ञ र वैश्वदेव यज्ञ-यी सबैलाई इष्टकर्म भनी बताइएको छ ।

**इष्टापूर्ते द्विजातीनां सामान्यो धर्म उच्यते ।**
**अधिकारी भवेच्छूद्रः पूर्ते धर्मे न वैदिके ॥६॥**

इष्ट र पूर्तलाई द्विजका सामान्य धर्म भनी बताइएको छ । शूद्र पूर्त धर्मको अधिकारी त हुन्छ तर वेदको होइन ।

**यावदस्थि मनुषष्य गङ्गातोयेषु तिष्ठति ।**
**तावद्वर्षसहस्राणि स्वर्गलोके महीयते ॥७॥**

मानिसको अस्थि जबसम्म गङ्गाको पानीमा रहन्छ त्यति नै हजार वर्षसम्म मनुष्यले स्वर्गलोकमा महानता प्राप्त गर्दछ ।

**देवतानां पितृणां च जले दद्याज्जलाञ्जलीन् ।**
**असंस्कृतमृतानां च स्थले दद्याज्जलाञ्जलिम् ॥८॥**

देवता र पितृका लागि जलमा जलाञ्जली दिनू । जो संस्कार नगरी मरेका छन् तिनलाई स्थलमा जलाञ्जली दिनू ।

**एकादशाहे प्रेतस्य यस्य चोत्सृज्यते वृषः ।**
**मुच्यते प्रेतलोकात्तु पितृलोकं स गच्छति ॥९॥**

जो मानिस मर्दा मरेको एघारौंका दिनमा वृषोत्सर्ग गरिएको छ, त्यो मानिस प्रेतलोकबाट छुट्द्छ र पितृलोकमा जान्छ ।

**एष्टव्या बहवः पुत्रा यद्येकोऽपि गयां व्रजेत् ।**
**यजेत वाऽश्वमेधेन नीलं वा वृषमुत्सृजेत् ॥१०॥**

धेरै छोराको कामना गर्नू । हुनसक्छ तीमध्ये कुनै एक गया जाला, कुनै एकले अश्वमेध गर्ला वा कुनै एकले नीलो वृषको उत्सर्ग गर्ला ।

**वाराणस्यां प्रविष्टस्तु कदाचिन्निष्क्रमेद्यदि ।**

**हसन्ति तस्य भूतानि अन्योन्य करताडनैः ॥११॥**

वाराणसीमा (प्राण त्याग गर्न) गएर कुनै कारण त्यत्तिकै फर्कियो भने सबै भूतहरु त्यसमाथि ताली बजाएर हाँस्दछन् ।

**गयाशिरे तु यत्किंचिन्नाम्ना पिण्डं तु निर्वपेत् ।**
**नरकस्था दिवं यान्ति स्वर्गस्था मोक्षमाप्नुयुः ॥१२॥**

गया भित्र जोसुकैको नामले जुन पिण्ड दिइन्छ, यदि ती नरकमा छन् भने स्वर्गमा जान्छन् र स्वर्गमा भए मोक्ष हुन्छन् ।

**आत्मनो वा परस्यापि गयाक्षेत्रे यतस्ततः ।**
**यन्नाम्ना पातयेत्पिण्डं तं नयेद् ब्रह्म शाश्वतम् ॥१३॥**

आफन्त वा पराया जो सुकै सम्बन्धीका लागि जुन नामले गयाक्षेत्रमा जता तता जुन पिण्ड दिइन्छ, त्यसले उसलाई शाश्वत ब्रह्मको प्राप्ति गराउँदछ ।

**लोहितो यस्तु वर्णेन शङ्खवर्णखुरः स्मृतः ।**
**लाङ्गूलशिरसोश्चैव स वै नीलवृषः स्मृतः ॥१४॥**

जुन रङ्मा कालो छ तथा खुर शङ्खको रङ जस्तै छ तथा पुच्छर र शीर सेतो छ त्यसलाई नीलवृष भनिन्छ ।

**नवश्राद्धं त्रिपक्षं च द्वादशैव तु मासिकम् ।**
**षाण्मासे चाऽऽब्दिकं चैव श्राद्धान्येतानि षोडश ॥१५॥**

नवश्राद्ध, पैंतालीस दिनको श्राद्ध, एक-एक महिनामा हुने बाह्र श्राद्ध, छ महिनामा हुने श्राद्ध र वर्ष दिनपछि हुने श्राद्ध गरी जम्मा सोह्र श्राद्ध हुन्छन् ।

**यस्यैतानि न कुर्वीत एकोद्दिष्टानि षोडश ।**
**पिशाचत्वं स्थिरं तस्य दत्तैः श्राद्धशतैरपि ॥१६॥**

जसका यी सोह्र  एकोद्दिष्ट श्राद्ध गर्रिदैन सैयौं श्राद्ध गर्दा पनि उसको प्रेतत्व जस्तातस्तै रहन्छ ।

सपिण्डीकरणादूर्ध्वं प्रतिसंवत्सरं द्विजः ।
मातापित्रोः पृथक्कुर्यादेकोद्दिष्टं मृतेऽहनि ॥१७॥

सपिण्डीकरण गरेपछि द्विजहरुले प्रत्येक वर्ष आमाबाबु मरेका दिन बेग्लाबेग्लै एकोद्दिष्ट श्राद्ध गरुन् ।

वर्षे वर्षे तु कर्तव्यं मात्रापित्रोस्तु संततम् ।
अदैवं भोजयेच्छ्राद्धं पिण्डमेकं तु निर्वपेत् ॥१८॥

आमाबाबुको श्राद्ध प्रत्येक वर्ष निरन्तर गर्नू, देवतालाई श्राद्ध भोजन गराउनू र एक पिण्ड दिनू ।

संक्रान्तावुपरागे च पर्वण्यपि महालये ।
निर्वाप्यास्तु त्रयः पिण्डा एकतस्तु क्षयेऽहनि ॥१९॥

संक्रान्ति, ग्रहण, औंसी आदि पर्व तथा महालयमा तीन पिण्ड दिनुपर्ने हुन्छ । मृत्युका दिन एक पिण्ड दिइने गरिन्छ ।

एकोद्दिष्टं परित्यज्य पार्वणं कुरुते द्विजः ।
अकृतं तद्विजानीयात्स मातृपितृघातकः ॥२०॥

जो द्विज एकोद्दिष्ट छाडी पार्वण श्राद्ध गर्दछ, उसले त्यो श्राद्ध नगरेकै बराबर हुन्छ र मातापिताको घातक हुन्छ ।

अमावस्यां क्षयो यस्य प्रेतपक्षेऽथ वा यदि ।
सपिण्डीकरणादूर्ध्वं तस्योक्तः पार्वणो विधिः ॥२१॥

जसको मृत्यु औंसीमा वा प्रेतपक्षमा हुन्छ त्यसको सपिण्डीकरण गरेपछि पार्वण विधि बताइएको छ ।

त्रिदण्डग्रहणादेव प्रेतत्वं नैव जायते ।
अहन्येकादशे प्राप्ते पार्वणं तु विधीयते ॥२२॥

सन्यास ग्रहण गर्नाले प्रेतत्वको प्राप्ति हुँदैन । त्यस्ताका लागि पनि ११ औं दिन आएपछि पार्वण त गरिन्छ नै ।

**यस्य संवत्सरादर्वाक्सपिण्डीकरणं स्मृतम् ।**
**प्रत्यहं तस्योदकुम्भं दद्यात्संवत्सरं द्विजः ॥२३॥**

जसका लागि एक वर्ष पहिले नै सपिण्डीकरण भनिएको छ, तिनका लागि दिनहुँ वर्षदिनसम्म जलपूर्ण घडा दान गर्नू ।

**पत्या चैकेन कर्तव्यं सपिण्डीकरणं स्त्रियाः ।**
**पितामह्याऽपि तत्तस्मिन्सत्येवं तु क्षयेऽहनि ॥**
**तस्यां सत्यां प्रकर्तव्यं तस्याःश्वश्रवेति निश्चितम् ॥२४॥**

स्त्रीको सपिण्डीकरण एकमात्र पतिका साथ गर्नू । पति जीवित भए बाबुकी आमा (बूढी सासू) का साथ मरणको दिन गर्न सकिन्छ । बूढीसासू पनि जीवित भए निश्चितरुपमा सासूसँग उनको सपिण्डीकरण गर्नु पर्दछ ।

**विवाहे चैव निर्वृत्ते चतुर्थेऽहनि रात्रिषु ।**
**एकत्वं सा गता भर्तुः पिण्डे गोत्रे च सूतके ॥२५॥**

विवाहका काम सकिए पछि चौथो दिन रातका समयमा स्त्री, पतिको पिण्ड-गोत्र र सूतकमा मिल्दछे ।

**स्वगोत्राद् भ्रश्यते नारी उद्वाहात्सप्तमे पदे ।**
**भर्तृगोत्रेण कर्तव्यं दानं पिण्डोदकक्रियाः ॥२६॥**

विवाहमा सप्तपदी पछि नारी आफ्नो गोत्रबाट अलग हुन्छे । उसका लागि दान र पिण्डोदक आदि काम पतिको गोत्रबाट गरिनु पर्दछ ।

**द्विमातुः पिण्डदानं तु पिण्डे पिण्डे द्विर्नामतः ।**
**षण्णां देयास्त्रयःपिण्डा एवं दाता न मुह्यति ॥२७॥**

मातालाई दुई पटक नाम लिएरै पिण्ड दिनू । अरु छलाई तीन पिण्ड दिनु पर्दछ । यसरी पिण्ड दिने मानिस मोहमा प्राप्त हुँदैन ।

**अथ चेन्मन्त्रविद्युक्तः शारीरैः पङ्क्तिदूषणैः ।**
**अदोषं तं यमः प्राह पङ्क्तिपावन एव सः ॥२८॥**

मन्त्र जान्ने पङ्क्तिका (ब्राह्मणलाई) शारीरिक दोष भएपनि तिनलाई यमले दोषरहित नै मानेका छन् । यसले पङ्क्तिलाई पवित्रै बनाउँदछ ।

**अग्नौकरणशेषं तु पितृपात्रे प्रदापयेत् ।**
**प्रतिपाद्ये पितृणां च न दद्याद् वैश्वदेविके ॥२९॥**

अग्निहोत्रको बाँकी अन्नलाई पिताको पात्रमा हालिदिनू । पितृलाई जे दिइन्छ त्यो विश्वदेवलाई नदिनू ।

**अनग्निको यदा विप्रः श्राद्धं करोति पार्वणम् ।**
**तत्र मातामहानाञ्च कर्तव्यमभयं सदा ॥३०॥**

अग्निहोत्र नगर्ने ब्राह्मणले जब पार्वण श्राद्ध गर्दछ तब सधैं मातामहलाई पनि अभय प्रदान गर्नू (पिण्ड दिनू) ।

**अपुत्रा ये मृताः केचित्पुरुषा वा स्त्रियोऽपि वा ।**
**एभ्य एव प्रदातव्यमेकोद्दिष्टं न पार्वणम् ॥३१॥**

जो स्त्री वा पुरुष पुत्रहीन भई मरेका छन् तिनलाई एकोद्दिष्ट श्राद्ध नै दिनू, पार्वण होइन ।

**यस्मिन्राशिगते सूर्ये विपत्तिः स्याद् द्विजन्मनः ।**
**तस्मिन्नहनि कर्तव्यं दानं पिण्डोदकक्रिया ॥३२॥**

सूर्य जुन राशिमा हुँदा द्विजको मृत्यु भएको हो, त्यसै राशिको त्यही दिन पिण्ड, दान र उदकक्रिया गर्नु पर्दछ ।

**वर्षवृद्ध्यभिषेकादि कर्तव्यमधिके न तु ।**
**अधिमासे तु पूर्वं स्याच्छ्राद्धं संवत्सरादपि ॥३३॥**

अधिक समय व्यतित भएपछि जन्मोत्सव, अभिषेक आदि नगर्नू । अधिकमास भए श्राद्ध वर्षभन्दा पहिले नै हुन्छ ।

**स एव हेयोद्दिष्टस्य येन केन तु कर्मणा ।**
**अभिघातान्तरं कार्यं तत्रैवाहः कृतं भवेत् ॥३४॥**

हेयोदिष्टका सम्बन्धमा पनि यही नियम छ । जुन कुनै कर्मद्वारा मृत्यु पछि जे जति गर्नुछ त्यो त्यसै दिन गरिनु पर्दछ ।

**शालाग्नौ पच्यते ह्यन्नं लौकिके वापि नित्यशः ।**
**यस्मिन्नेव पचेदन्नं तस्मिन्होमो विधीयते ॥३५॥**

अन्न सधैं यज्ञशालाको वा लौकिक अग्निमा नै पकाइन्छ । जुन अग्निमा अन्न पकाइन्छ त्यसैमा होम गरिन्छ ।

**वैदिके लौकिके वाऽपि नित्यं हुत्वा ह्यतन्द्रितः ।**
**वैदिके स्वर्गमाप्नोति लौकिके हन्ति किल्विषम् ॥३६॥**

वैदिक वा लौकिक अग्निमा नित्य अल्छि नगरी होम हाल्नू । वैदिक अग्निमा होम हाल्नाले उसले स्वर्ग प्राप्त गर्दछ भने लौकिकमा हाल्नाले आफ्नो पाप पखाल्छ ।

**अग्नौ व्याहृतिभिः पूर्वं हुत्वा मन्त्रैस्तु शाकलैः ।**
**संविभागं तु भूतेभ्यस्ततोऽश्नीयादनग्निमान् ॥३७॥**

अग्निमा पहिला व्याहृतिले त्यसपछि शाकल शाखाका मन्त्रले होम हाली त्यसपछि भूतका लागि भाग निकाल्नू । अग्निमा होम नगर्नेले पनि त्यसपछि नै भोजन गर्नू ।

**उच्छेषणं तु नोत्तिष्ठेद्यावद्विप्रविसर्जनम् ।**
**ततो गृहबलिं कुर्यादिति धर्मो व्यवस्थितः ॥३८॥**

(श्राद्धमा) जुठो सोरिएर ब्राह्मणलाई बिदा गरेपछि मात्र भूतबलि दिनु पर्दछ । यही नै धर्मको व्यवस्था छ ।

**दर्भाः कृष्णाजिनं मन्त्रा ब्राह्मणाश्च विशेषतः ।**

**नैते निर्माल्यतां यान्ति नियोक्तव्याःपुनःपुनः ॥३९॥**

कुश, कृष्ण मृगचर्म, मन्त्र र विशेष गरी ब्राह्मण यी कहिल्यै अशुद्ध हुँदैनन् । यिनलाई पटकपटक प्रयोग गरिनु पर्दछ ।

**पानमाचमनं कुर्यात्कुशपाणिः सदा द्विजः ।**
**भुक्त्वा नोच्छिष्टतां याति एष एव विधिःस्मृतः ॥४०॥**

द्विजले जहिले पनि कुश हातमा लिई जलपान र आचमन गर्नू । यसो गर्नाले उ भोजनपछि पनि अशुद्ध हुँदैन । यही विधि मानिएको छ ।

**पान आचमने चैव तर्पणे दैविके सदा ।**
**कृशहस्तो न दुष्येत यथा पाणिस्तथा कुशः ॥४१॥**

जलपान, आचमन, तर्पण र देवपूजामा सधैं कुश हातमा लिई राख्नेलाई दोष लाग्दैन किनकि हातजस्तै कुश पनि पवित्र हुन्छ ।

**वामपाणौ कुशं कृत्वा दक्षिणेन उपस्पृशेत् ।**
**विनाचमन्ति ये मढा रुधिरेणाऽऽचमन्ति ते ॥४२॥**

देब्रे हातमा कुश लिई दाहिने हातले आचमन गर्नू । मूर्ख जो कुश नलिई आचमन गर्दछ उसले मानौं रगतले नै आचमन गर्दछ ।

**नीवीमध्येषु ये दर्भा ब्रह्मसूत्रेषु ये कृताः ।**
**पवित्रांस्तान्विजानीयाद्यथा कायस्तथा कुशाः ॥४३॥**

नीवी वा जनै भित्र जुन कुश राखिएको हुन्छ त्यो पवित्र जान्नू । शरीर जस्तै कुश पनि पवित्र हुन्छ ।

**पिण्डे कृतास्तु ये दर्भा यैः कृतं पितृतर्पणम् ।**
**मूत्रोच्छिष्टपुरीषं च तेषां त्यागो विधीयते ॥४४॥**

पिण्डमा राखिएका, पितृतर्पण गरिएका र मलमूत्र त्याग गर्दा वा उच्छिष्ट कार्य गर्दा लिइएका कुश त्याग गर्नू ।

**दैवपूर्वं तु यच्छ्राद्धमदैवं चापि यद्भवेत् ।**
**ब्रह्मचारी भवेत्तत्र कुर्याच्छ्राद्धं तु पैतृकम् ॥४५॥**

देवकर्मभन्दा पहिले र देवकर्म नगरी गरिने श्राद्धमा कर्ताले ब्रह्मचर्यको पालना गर्नुपर्दछ । यसरी नै पितृश्राद्ध गर्नू ।

**मातुः श्राद्धं तु पूर्वं स्यात्पितृणां तदनन्तरम् ।**
**ततो मातामहानां च वृद्धौ श्राद्धत्रयं स्मृतम् ॥४६॥**

पहिला माताको, त्यसपछि पितृको र आमाकी आमाको श्राद्ध गर्नू । नान्दीमुखीमा यी तीन श्राद्ध मानिएको छ ।

**ऋतुर्दक्षो वसुः सत्यः कालकामौ धृतिलोचनौ ।**
**पुरूरवार्द्रवश्चैव विश्वेदेवाः प्रकीर्तिताः ॥४७॥**

ऋतु, दक्ष, वसु, सत्य, काम, धृति, लोचन, पुरुरवा र आर्द्रव यी विश्वदेव मानिएका छन् ।

**आगच्छन्तु महाभागा विश्वेदेवा महाबलाः ।**
**ये तत्र विहिताः श्राद्धे सावधाना भवन्तु ते ॥४८॥**

महाभाग, महाबली विश्वदेव आउन् । श्राद्धमा जसका लागि जुन ठाउँ तोकिएको छ ती त्यसमा सावधान रहुन् ।

**इष्टिश्राद्धे ऋतुर्दक्षो वसुः सत्यश्च वैदिके ।**
**कालः कामोग्निकार्येषु काम्येषु धृतिलोचनौ ॥**
**पुरूरवार्द्रवश्चैव पार्वणेषु नियोजयेत् ॥४९॥**

इष्टि श्राद्धमा ऋतु र दक्ष, वैदिकमा वसु र सत्य, अग्निकार्यमा काल र काम, काम्यकर्ममा धृति र लोचन तथा पार्वणमा पुरुरवा र आर्द्रवलाई नियुक्त गर्नू ।

**यस्यास्तु न भवेद् भ्राता न विज्ञायेत वा पिता ।**
**नोपयच्छेत तां प्राज्ञः पुत्रिकाधर्मशङ्कया ॥५०॥**

जुन कन्याको दाजुभाई हुँदैन वा बाबुको अत्तोपत्तो हुँदैन बुद्धिमानले पुत्रिका धर्मको शङ्काले त्यस्ती कन्यासँग विवाह नगर्नू ।

**अभ्रातृकां प्रदास्यामि तुभ्यं कन्यामलङ्कृताम् ।**
**अस्यां यो जायते पुत्रः स मे पुत्रो भविष्यति ॥५१॥**

जसका दाजुभाई हुँदैन त्यस्ती अलङ्कृत कन्यालाई 'म तिमिलाई यस कारणले दिइ राखेको छु की यसबाट जुन छोरो जन्मनेछ त्यो मेरो छोरो हुनेछ' (यस्ती कन्या पुत्रिका हुन्छे) ।

**मातुः प्रथमतः पिण्डं निर्वपेत्पुत्रिकासुतः ।**
**द्वितीयं तु पितुस्तस्यास्तृतीयं तु पितुः पितुः ॥५२॥**

पुत्रिका पुत्रले पहिले मातालाई, त्यसपछि माताका पितालाई र तेश्रो पिण्ड आमाका हजूरबालाई दिनू ।

**मृण्मयेषु च पात्रेषु श्राद्धे यो भोजयेत्पितृन् ।**
**अन्नदाता पुरोधाश्च भोक्ता च नरकं व्रजेत् ॥५३॥**

जसले श्राद्धमा पितृलाई माटाका भाँडामा खुवाउँदछ त्यस्तो अन्न दिने, पुरोहित र खाने सबै नरकमा पर्दछन् ।

**अलाभे मृण्मये दद्यादनुज्ञातस्तु तैर्द्विजैः ।**
**घृतेन प्रोक्षणं कुर्यान्मृदः पात्रं पवित्रकम् ॥५४॥**

अरु भाँडा नभए ब्राह्मणका आज्ञाले माटाकै भाँडामा पनि खुवाउनू । ती भाँडामा घिउ छर्कनू । यसरी माटाका भाँडा पनि पवित्र हुन्छन् ।

**श्राद्धं कृत्वा परश्राद्धे यस्तु भुञ्जीत विह्वलः ।**
**पतन्ति पितरस्तस्य लुप्तपिण्डोदकक्रियाः ॥५५॥**

(घरमा) श्राद्ध गरी जो (ब्राह्मण) अर्काको श्राद्ध मजाले खान्छ, त्यसको पितृलाई दिइएको पिण्ड र जल लुप्त हुन्छ । ती पतित हुन्छन् ।

**श्राद्धं दत्त्वा च भुक्त्वा च अध्वानं योऽधिगच्छति ।**

भवन्ति पितरस्तस्य तन्मासं पांसुभोजनाः ॥५६॥

श्राद्ध गरेर वा खाएर जो मानिस बाटोमा हिँड्दछ त्यसका पितृले एक महिनासम्म त्यही बाटाको धूलो खानु पर्दछ ।

पुनर्भोजनमध्वानं भाराध्ययनमैथुनम् ।
दानं प्रतिग्रहं होमं श्राद्धं भुक्त्वाष्ट वर्जयेत् ॥५७॥

श्राद्ध खाएर-फेरी खान, बाटो हिँड्न, भारी उचाल्न, पढ्न, सम्भोग गर्न, दान लिनदिन र होम गर्न - यी आठ काम छाड्नू ।

अध्वगामी भवेदश्वः पुनर्भोक्ता च वायसः ।
कर्मकृज्जायते दासः स्त्रीसङ्गेन च सूकरः ॥५८॥

बाटो हिँडे घोडा, फेरी खाए कौवा, काम गरे दास र सम्भोग गरे सुँगुर हुन्छ ।

दशकृत्वः पिबेदपः सावित्र्या चाभिमन्त्रिताः ।
ततः संध्यामुपासीत शुध्येत तदनन्तरम् ॥५९॥

उसले गायत्री मन्त्रले अभिमन्त्रित जल दश पटक पिओस् । त्यसपछि सन्ध्योपासना गर्नू । त्यसपछि मात्रै उ शुद्ध हुन्छ ।

आर्द्रवासास्तु यत्कुर्याद्बहिर्जानु च यत्कृतम् ।
तत्सर्वं निष्फलं कुर्याज्जपहोमप्रतिग्रहम् ॥६०॥

जसले जप-होम र दान लिने कार्य भिजेका लुगा लगाएर गर्दछ अथवा जुन काम घुँडाभन्दा बाहिर हात राखेर गरिन्छ । यस्तो कार्यले सबै कर्म निष्फल पार्दछ ।

चान्द्रायणं नवश्राद्धे पराको मासिके तथा ।
पक्षत्रये तु कृच्छ्रं स्यात्षण्मासे कृच्छ्रमेव च ॥६१॥

नवश्राद्धमा खाए चान्द्रायण, मासिकमा खाए पराक, पैंतालिसौंमा खाए कृच्छ्र र छ महिनामा खाए कृच्छ्र व्रत नै गर्नू ।

ऊनाब्दिके त्रिरात्रं स्यादेकाहः पुनराब्दिके ।
शावे मासं तु भुक्त्वा वा पादकृच्छ्रो विधीयते ॥६२॥

मृतकका घरमा एघारौं महिनामा खाए तीन दिनको, वार्षिकीमा खाए एक दिनको तथा शवाशौचमा खाए एक महिनाको पादकृच्छ्र गर्नू ।

सर्पविप्रहतानां च श्रृङ्गिदंष्ट्रिसरीसृपैः ।
आत्मनस्त्यागिनां चैव श्राद्धमेषां न कारयेत् ॥६३॥

सर्प वा ब्राह्मणद्वारा मारिने, सिङ-दाह्रा हुने वा घस्रने जीवबाट मारिने तथा आत्महत्या गर्नेको श्राद्ध नगर्नू ।

गोभिर्हतं तथोद्बद्धं ब्राह्मणेन तु घातितम् ।
तं स्पर्शयन्ति ये विप्रा गोजाश्वाश्च भवन्ति ते ॥६४॥

गाईद्वारा मारिएका, झुण्डिएर मरेका र ब्राह्मणद्वारा मारिएकालाई जो ब्राह्मण छुन्छ त्यो क्रमशः गाई, बाख्री र घोडा बन्दछ ।

अग्निदाता तथा चान्ये पाशच्छेदकराश्च ये ।
तप्तकृच्छ्रेण शुध्यन्ति मनुराह प्रजापतिः ॥६५॥

चितामा आगो दिने तथा अर्थीको बन्धन काट्नेहरु तप्तकृच्छ्रले शुद्ध हुन्छन् भन्ने प्रजापति मनुको वचन छ ।

त्र्यहमुष्णं पिवेदापस्त्र्यहमुष्णं पिवेत्पयः ।
त्र्यहमुष्णं घृतं पीत्वा वायुभक्षो दिनत्रयम् ॥६६॥

तीन दिन तातो पानी, तीन दिन तातो दुध, तीन दिन तातो घिऊ र तीन दिन वायु भक्षण गर्नू वा एक पल घिउ पिउनू ।

गोभूहिरण्यहरणे स्त्रीणां क्षेत्रगृहस्य च ।
यमुद्दिश्य त्यजेत्प्राणांस्तमाहुर्ब्रह्मघातकम् ॥६७॥

गाई-जमिन-सुन-स्त्री-खेत र घर लुटेर लिँदा जोसुकैका लागि जोसुकै मारिए पनि त्यसलाई ब्रह्महत्यारा भनिन्छ ।

**उद्यताः सह धावन्ते सर्वे ये शस्त्रपाणयः ।**
**यद्येकोऽपि हनेत्तत्र सर्वे ते ब्रह्मघातकाः ॥६८॥**

हातमा हतियार लिई एउटै उद्देश्यले सँगै दौडनेमध्ये कुनै एउटाले मारे पनि सबै नै ब्रह्महत्यारा नै हुन्छन् ।

**बहूनां शस्त्रघातानां यद्येको धर्मघातकः ।**
**सर्वेते शुद्धिमृच्छन्ति स एको ब्रह्मघातकः ॥६९॥**

हतियारले हत्या गर्ने धेरैमा यदि एकमात्र मानिस धर्मघातक भए बाँकी सबै शुद्ध हुन्छन् त्यो एउटा मात्र ब्रह्महत्यारा हुन्छ ।

**पतितान्नं यदा भुङ्क्ते भुङ्क्ते चाण्डालवेश्मनि ।**
**स मासार्द्धं चरेद्वारि मासं कामकृतेन तु ॥७०॥**

पतितको अन्न खाए वा चण्डालको घरमा खाए आधा महिनासम्म जलले निर्वाह गर्नू । जानीजानी गरे एक महिना यसरी बस्नू ।

**यो येन पतितेनैव संसर्गं याति मानवः ।**
**स तस्यैव व्रतं कुर्यात्तत्संसर्गविशुद्धये ॥७१॥**

जो मानिस जुन पतितका साथ संसर्गमा आउँछ उसले शुद्धिका लागि त्यसैको व्रतको पालना गर्नू ।

**ब्रह्महपातकिस्पर्शे स्नानं येन विधीयते ।**
**तेनैवोच्छिष्टसंस्पृष्टः प्राजापत्यं समाचरेत् ॥७२॥**

जुन ब्रह्मघाती वा पातकीलाई छुँदा नुहाउने विधान छ त्यही ब्रह्मघाती वा पातकीले छुँदा प्राजापत्य व्रत गर्नू ।

**ब्रह्महा च सुरापायी स्तेयी च गुरुतल्पगः ।**

**महान्ति पातकान्याहुस्तत्संसर्गी च पञ्चमः ॥७३॥**

ब्रह्मघाती, सुरापेयी, चोर र गुरुपत्नीगामी तथा यिनको सङ्गत गर्ने यी पाँचैलाई महापापी भनिएको छ ।

**स्नेहाद्वा यदि वा लोभाद्भयादज्ञानतोऽपि वा ।**
**कुर्वन्त्यनुग्रहं ये तु तत्पापं तेषु गच्छति ॥७४॥**

मायाले, लोभले वा थाहा नपाएर जेसुकै कारणले पनि पापीलाई दया गर्ने जो कोहीलाई त्यही पाप लाग्दछ ।

**उच्छिष्टोच्छिष्टसंस्पृष्टो ब्राह्मणस्तु कदाचन ।**
**तत्क्षणात्कुरुते स्नानमाचमेन शुचिर्भवेत् ॥७५॥**

कुनै बेला जुठो मुख हुनेले छोइएको ब्राह्मण त्यही बेला नुहाई आचमन गर्नाले शुद्ध हुन्छ ।

**कुब्जवामनषण्डेषु गद्‌गदेषु जडेषु च ।**
**जात्यन्धे बधिरे मूके न दोषः परिवेदने ॥७६॥**

(दाजु) कुप्रो, पुड्को, नपुंसक, तोते, मूर्ख, जन्मान्ध, बहिरो र लाटो हुँदा दाजुभन्दा पहिले विवाह गर्ने भाईलाई दोष लाग्दैन ।

**क्लीबे देशान्तरस्थे च पतिते व्रजितेऽपि वा ।**
**योगशास्त्राभियुक्ते च न दोषः परिवेदने ॥७७॥**

नपुंसक, विदेशमा रहेको, पतित, सन्यासी वा योग र शास्त्रमा निमग्न दाजु अविवाहत हुँदा विवाह गर्ने भाईलाई कुनै दोष छैन ।

**पूरणे कूपवापीनां वृक्षच्छेदनपातने ।**
**विक्रीणीते गजं चाश्वं गोवधं तस्य निर्दिशेत् ॥७८॥**

कसैले कुवा-पँधेरो पुरे, रुख कटाए वा लडाए वा हातीघोडा बेचे तिनलाई गोहत्याको प्रायश्चित गर्न लगाउनू ।

पादेऽङ्गरोमवपनं द्विपादे श्मश्रु केवलम् ।
तृतीये तु शिखावर्जं शिखाछेदश्चतुर्थके ॥७९॥

चौथाई कृच्छ्रमा शरीरका रौं खौरने, दुई चौथाईमा जुँगादाह्री मात्र खौरने, तीन चौथाईमा टुपी बाहेक सबै खौरने र कृच्छ्रमा टुपीसमेत सबै खौरने विधान छ ।

चण्डालोदकसंस्पर्शे स्नानं येन विधीयते ।
तेनैवोच्छिष्टसंस्पृष्टः प्राजापत्यं समाचरेत ॥८०॥

चाण्डालको जुन जल छोए नुहाउनु भनिएको छ, त्यही जल पिउने ब्राह्मणले प्राजापत्य व्रत गर्नू ।

चण्डालघटभाण्डस्थं यत्तोयं पिबते द्विजः ।
तत्क्षणात्क्षिपते यस्तु प्राजापत्यं समाचरेत् ॥८१॥

चाण्डालको घडा वा कुनै भाँडामा राखिएको जल पिउने र तत्काल बान्ता गरि दिने द्विजले प्राजापत्य व्रत गर्नू ।

यदि न क्षिपते तोयं शरीरे तस्य जीर्यति ।
प्राजापत्यं न दातव्यं कृच्छ्रं सांतपनं चरेत् ॥८२॥

बान्ता गर्दैन र शरीरमा त्यो जल पच्दछ भने त उसलाई प्राजापत्य होइन कि कृच्छ्र सान्तपन व्रत गर्न लगाउनू ।

चरेत्सांतपनं विप्रः प्राजापत्यं तु क्षत्त्रियः ।
तदर्धं तु चरेद्वैश्यः पादं शूद्रे तु दापयेत् ॥८३॥

ब्राह्मणले सांतपन, क्षत्रियले प्राजापत्य र वैश्यले त्यसको आधा व्रत गर्नु । शूद्रले एक चौथाई व्रत गर्नू ।

रजस्वला यदा स्पृष्टा श्वानसूकरवायसैः ।
उपोष्य रजनीमेकां पञ्चगव्येन शुध्यति ॥८४॥

रजस्वला भएकी स्त्री कुकुर, सुँगुर र कागबाट छोइए एक रात उपवास बसी पञ्चगव्य पिउनाले शुद्ध हुन्छे ।

**अज्ञानत स्नानमात्रमानाभेस्तु विशेषतः ।**
**अत ऊर्ध्वं त्रिरात्रं स्यात् तदीयस्पर्शने मतम् ॥८५॥**

नजानी छोइए त्यसमा पनि विशेषतः नाइटोसम्म छोइए नुहाए पुग्दछ । त्यसभन्दा माथि छोइए तीन रात उपवास बस्नू ।

**बालश्चैव दशाहे तु पञ्चत्वं यदि गच्छति ।**
**सद्य एव विशुध्येत नाशौचं नोदकक्रिया ॥८६॥**

बालक जन्मेको दश दिन भित्र यदि वित्दछ भने तुरुन्त शुद्धि हुन्छ । आशौच र जलदानको क्रिया हुँदैन ।

**शावसूतक उत्पन्ने सूतकं तु यदा भवेत् ।**
**शावेज शुध्यते सूतिर्न सूतिः शावशोधिनी ॥८७॥**

जुठोमा सूतक परे जुठो सँगै सूतक शुद्ध हुन्छ तर सूतक सँगसँगै जुठो शुद्ध हुँदैन ।

**षष्ठेन शुध्येतैकाहं पञ्चमे त्र्यहमेव तु ।**
**चतुर्थे सप्तरात्रं स्यात्त्रिपुरुषे दशमेऽहनि ॥८८॥**

छैटौं पुस्तासम्म सूतक एक दिनमा, पाँचौं पुस्तासम्म तीन दिनमा, चौथो पुस्तासम्म सात दिनमा र तेश्रो पुस्तासम्म दश दिनमा शुद्ध हुन्छ ।

**मरणारब्धमाशौचं संयोगो यस्य नाग्निभिः ।**
**आदाहात्तस्य विज्ञेयं यस्य वैतानिको विधिः ॥८९॥**

अग्निहोत्र नगर्नेको आशौच मरेका दिनदेखि शुरु हुन्छ । वैतानिक विधि गर्नेको आशौच दाहसंस्कारबाट हुरु हुन्छ ।

**आममांसं घृतं क्षौद्रं स्नेहाश्च फलसंभवाः ।**
**अन्त्यभाण्डस्थिता ह्येते निष्क्रान्ताःशुचयःस्मृताः ॥९०॥**

काँचो मासु, घिऊ, मह र फलबाट बनाइने तेल यी कुरा नीचका भाँडामा राखिए पनि निकालेपछि शुद्ध हुन्छन् ।

**मार्जनीरजसासक्ते स्नानवस्त्रघटोदके ।**
**नवाम्भसि तथा चैव हन्ति पुण्यं दिवाकृतम् ॥९१॥**

नुहाएका कपडा, घडाको जल र ताजा जलमा यदि रजस्वलाले छोएको धुलो परे त्यसले दिनमा गरेको पुण्य नष्ट पार्दछ ।

**दिवा कपित्थच्छायायां रात्रौ दधिसक्तुषु च ।**
**धात्रीफलेषु सर्वत्र अलक्ष्मीर्वसते सदा ॥९२॥**

दिनमा खयरको छायामा, रातमा दही र सातुमा तथा अमलाको फलमा सदा अलक्ष्मीको वास हुन्छ ।

**यत्र यत्र च संकीर्णमात्मानं मन्यते द्विजः ।**
**तत्र तत्र तिलैर्होमो गायत्र्यष्टशतं जपेत् ॥९३॥**

द्विजले जब आफूलाई अपवित्र ठान्दछ तब तिलले होम गर्नू र एक सय आठ गायत्री जप गर्नू ।

**॥ इति लिखितर्षिप्रोक्तं धर्मशास्त्रं समाप्तम् ॥**



**॥ समाप्तेयं लिखितस्मृतिः ॥**



**॥ लिखतिस्मृतिको मोहन प्रसाद सापकोटाद्वारा**
**गरिएको नेपाली भावानुवाद समाप्त भएको छ ॥**



**सबैको कल्याण होस् !**